

महेश-संस्कृत-गुरूकुलम्

महेश-बाल-समूहको दोस्रो प्रकाशन

# महेश-बाल-साहित्य-उद्यान

वर्ष-३ अङ्क-२ २०७३ बैशाख

**सल्लाहकारहरू:**
स्वामी केशवानन्द गिरि
नीराजन पन्त
नारायणप्रसाद घिमिरे
चिरञ्जीवी खतिवडा
पर्वत घिमिरे
कोमल नेपाल

**सम्पादक:**
अनमोल घिताल
सर्वेश्वर ढुङ्गेल
प्रज्वल खनाल

**कम्प्युटर टाइप:**
सूर्यमणि जमरकट्टेल

**कम्प्युटर सेटिङ**
विवेकराज भट्टराई

**प्रकाशक:**
महेश-बाल-समूह
महेश-संस्कृत-गुरुकुलम्
देवघाट-२, तनहूँ

**वेव साइट:**
www.gurukulam.edu.np

**ईमेल ठेगाना:**
maheshashram@hotmail.com

## सम्पादकीय........

विशेषतः सहृदयी पाठक महानुभावहरूको काव्यव्यसनले महेश बाल साहित्य उद्यानले दोस्रो अवतार लिने मौका पाएको छ । कवि साथीभाइहरूको उत्साहको रविकिरणमा फक्रिएका काव्यात्मक फूलहरूले सबैलाई आकर्षित गर्न सक्नेछन् भन्ने आशा राखेका छौँ । अघिल्लो वर्ष कुनै कारणवश यस उद्यानले स्वरूप प्राप्त गर्न नसके पनि दुवै वर्षका काव्यप्रतिभाहरू यसमा फक्रिन पुग्नु दुःखविस्मारक बन्न पुगेको छ ।

समाजकल्याण र आनन्दका लागि लेखिएका साहित्य नै आजको आवश्यकता भएको हुँदा यथाशक्य तदनुरूप रचनाहरूलाई नै विशेषतः समेट्ने प्रयास गरेका छौँ । प्रातःस्मरणीय गुरुज्यूको सान्निध्यमा रहेर बालप्रतिभाहरूद्वारा वाचन गरिएका काव्यहरूले यस उद्यानमा फुल्दै आध्यात्मिक र हार्दिक मनहरूलाई आकर्षित गर्न सकून् भन्ने कामना राख्नु हामी वेदपाठी बटुकहरूको आशावादिता हो । आचार्य गुरूहरू, विद्यापीठका अग्रजहरू, अभिभावकहरू र सहृदयी पाठकहरूको स्नेह र सौहार्द अटूट रूपमा प्राप्त भए यस उद्यानले अर्को स्वरूप पनि अवश्य प्राप्त गर्नेछ भन्नुमा असत्य हुँदैन । यस उद्यानका हितैषी समस्त पाठकहरूबाट रचनाहरू प्रति सुझावको अपेक्षा गर्दछौँ ।

यस अङ्कको प्रकाशनार्थ सल्लाह दिनुहुने समस्त गुरूहरूलाई विशेष नमन गर्न चाहन्छौँ । त्यस्तै यस उद्यानलाई मूर्त रूप दिन रचनाहरू उपलब्ध गराउने बाल स्रष्टाहरूलाई धन्यवाद दिन चाहन्छौँ । काव्यपाठमा विशेष अभिरूचि राख्नुहुने समग्र अभिभावक र सहृदयी पाठक महानुभावहरू प्रति यस महेश बाल साहित्य उद्यानको दोस्रो अङ्क समर्पित गर्न चाहन्छौँ । र अन्त्यमा अर्को अङ्क पनि समयमै प्रकाशन हुनेमा विश्वस्त छौँ । अस्तु । जय होस् ।

सहयोगार्थः- रू.३०/-

## बाल समूहका पदाधिकारीहरू

**अनमोल धिताल**
**अध्यक्ष**

**शिवहरि नेपाल**
**उपाध्यक्ष**

**सर्वेश्वर ढुंगेल**
**कोषाध्यक्ष**

**प्रज्वल खनाल**
**सचिव**

**परशुराम धिताल**
**सहसचिव**

## अन्य विशेष सदस्यहरु

- युवराज दाहाल
- संगम पौडेल
- विधान आचार्य
- प्रभाकर घिमिरे
- सुजन थपलिया
- गौरव खतिवडा
- उत्तम अधिकारी
- सन्देश लामिछाने
- प्रकाश उपाध्याय
- अभिमन्यु ढुङ्गाना
- चन्द्र प्र. खतिवडा
- सागर लामिछाने
- हरि ढुङ्गाना
- सुजन पौडेल

# बालकवि-सूची

# शुभकामना

*–स्रग्विणी*

मोदसम्मोदिता बोधिभिर्बोधिताः
शीलवन्तः सदा कार्य उत्साहिताः ।
विश्वबन्धुत्वमन्त्रेण सम्मार्जिता
बालका जीवने सन्तु भो गर्जिताः ॥

शङ्कराचार्य - सिद्धान्त - सम्मानकै -
ब्रह्म - जीव - प्रपञ्चादि - बोध - प्रदैः ।
अर्पितं जीवनं संस्कृते संस्कृतौ
सञ्चलामो बुधैर्दर्शितायां सृतौ ॥

निर्मला भावना काशतां मानसे
साधना वर्ततां केवलं तेजसे ।
निर्धना दुर्बला हेलिताः सन्तु नो
साम्यभावेन हर्षेण गर्जन्तु भो ॥

लेख-काव्यादिभि-र्भावना लिख्यते
सद्विचारः कवीनां कृतौ दृश्यते ।
अग्रगामी कविर्मार्गद्रष्टा स्वयं
प्रेरणादायि काव्यं पठामो वयम् ॥

बालकोद्यानभागे शुभा बालका
हर्षिताः सन्त आभान्ति फुल्लन्ति वा ।
अध्वगा मानवाः पावयन्ति श्रुतिं
बालकानां पुनर्गीत-काव्यादिभिः ॥

✍ *चिरञ्जीवी-खतिवडाः*
***chiranjibi_ck@hotmail.com***

# जीवन

*–शार्दूलविक्रीडितम्*

जन्मेको पछिको र मर्नु अघिको त्यो काल हो जीवन
जस्मा आश्रित भै जिइन्छ भवमा त्यो चीज हो जीवन ।
काँडा हैन कदापि जीवन यहाँ हो पुष्प झैँ कोमल
कैले बाल हुने र वृद्ध कहिले यो जिन्दगी चञ्चल ॥१॥

प्यारो जीवन दैवबाट सबले यो विश्वमा पाइयो
पानी पत्थर धर्तीका सबकुरा यो जिन्दगी नै त हो ।
दुःखी छन् जनता सुखी कहि कहीँ कोही धनी दीन छन्
यस्तै जीवन विश्वमा छ जनको सारा कुरा भिन्न छन् ॥२॥

हेर्दा सुन्दर पार्नु मूर्ति जसरी यो जिन्दगानी सधैँ
सादा जीवन उच्च हुन्छ यसले पाइन्छ कल्याण नै ।
यौटा मानव जिन्दगी धरतिमा हेर्दा अहो ! सुन्दर
साच्चै जीवन हो यही प्रकृतिको यौटा सुनौलो रूप ॥३॥

सारा सम्पति रत्न वा धनहरू भन्दा ठूलो जीवन
सारा सृष्टि जगाउने अमर होस् हाम्रो यही जीवन ।
हाम्रो जीवन रम्य पुष्पहरूको एकान्तको हो वन
सारा सुन्दर वस्तु देख्न सकने हाम्रो यही जीवन ॥४॥

✍ ***सूर्यमणि जमरकट्टेल, कक्षा ९***

हे प्यारा शिशु फेरि बन्न म सके बन्ने थिएँ बालक
केटा केटी भनून् बुझक्कड बुढा मान्दिनँ केही धक ।
यो मीठो रसिलो खुला र हसिलो या मग्न मस्ती लिई
छोडी दिन्छु म मोल तोल जगको वात्सल्यलाई लिई ॥

# जीवन

*पञ्चचामर छन्द*

सुजीवन प्रभात हो प्रभातको प्रकाश हो
प्रकाशित प्रभावले वहन्छ सद्विचार यो ।
र जीवन प्रपञ्च हैन पुष्पको सुवास हो
सुवासना छरेर फुल्छ दुःख कष्ट नाश भो ॥

यहाँ अनेक मार्ग छन् स्वयं चुनेर बढ्नुछ
गति प्रवाहमा नदीसँगै अगाडि बग्नुछ ।
सुरम्य शान्त रत्न बन्छ, बल्छ फेरी जिन्दगी
कतै भने सुकेर बस्छ फूल नै सधैभरी ॥

छ जिन्दगी रमाइलो छ जिन्दगी फराकिलो
यहाँ त्यहाँ सबै तिर प्रवेश गर्न पाइयो ।
कृतज्ञ बन्नुपर्छ जिन्दगीप्रति प्रतिक्षण
सुमार्ग मै हिडोस् नदी स्वरूप जिन्दगी अब ॥

न बुझ्छ, बुझ्न सक्छ को कता र के छ जीवन
यहीँ रमाइ बस्दछन् मयूर कोइली सब ।
सुकेर झर्छ जिन्दगी यथा सुपुष्प झर्दछ
छ सत्य एक रीत जन्म लिन्छ फेरि मर्दछ ॥

✍ ***सन्देश लामिछाने, कक्षा ९***

# हाइकु

केटीका कुरा
गुन्डाका तीखा छुरा,
दुवै खतरा ॥

जाली न बुन्नु
ममा पनि शक्ति छ,
देवको भक्ति छ ॥

अहिले त छ
भोलि छैन भन्छन् रे,
चाइनिज् सामान ॥

बेसरी पोल्छ
आगोको राफले साथी,
आगो नबाल ॥

बिग्रिदैँछ देश
फेरिन्छ आ-आफ्नो भेष्,
के बन्ला यो देश ॥

कुर्सी नै रोज्छन्
बजेटको पैसा खोज्छन्,
बिगार्छ देश ॥

✍ ***विवेक पोखेल, कक्षा ७***

# गजल

हजारौँ कहाँ छन् मझैँ भाग्यमानी ।
म चाखीरहेछु सबैको सलामी ॥

सबैको छ माया सबैसँग साथी ।
अहङ्कार छोडी भने शब्द हामी ॥

बने भाइ बन्धु सबै देशभक्त ।
महङ्गा हुनेछन् सबै जिन्दगानी ॥

यही देशलाई उठाएर मैले ।
सपार्दै थिएँ की नयाँ यो जवानी ॥

✍ ***मनीष रेग्मी, कक्षा-७***

**जीवन विकृति हो, मृत्यु प्रकृति हो**

# वेदना नेपालको

*भुजङ्गप्रयातम्*

सधैँ चैत वैशाखको भान हुन्थ्यो,
र सौहार्दको नित्य सम्मान हुन्थ्यो ॥
थियो शान्त नेपाल सद्भाव राम्रो,
न तेरो न मेरो थियो विश्व हाम्रो ॥

खुसीमाथि आनन्द थप्ने बिहानी,
कयौँ स्वप्न देखाउँथ्यो त्यो सिरानी ।
कहाँबाट दुःखी बनेछन् हिमाल,
गरेछन् सुरु पुत्रले थाप्न जाल ॥

सबै स्वार्थका लोभका भक्त बन्दा,
अधोमार्गको नै कुवा फेरि खन्दा ।
निराशी बने पन्छी आकाश माझ,
सुधा छर्न सक्दैन रे चन्द्र साँझ ॥

अझैँ द्वन्द्व सोध्दैछ, खोज्दैछ क्रान्ति,
हरायो कहाँ बुद्धको प्रेम, शान्ति ?
महाकाल आयो, असन्तोष छायो,
र नेपालले हात मेरो समायो ॥

उठौँ है जहाँ छौँ त्यहीँबाट हामी,
समाएर झण्डा बनी अग्रगामी ।
सबै मित्र आफ्ना भए, को पराई ?
रमाओस् बरु देश बन्धुत्व पाई ॥

✍ ***ईशान सुवेदी, कक्षा १०***

# गजल

यहाँ विश्व जित्ने कुनै जात छैन ।
र तारा नभाको कुनै रात छैन ॥

सबै मर्नुपर्नेछ है एकबार ।
र सुक्दै नसुक्ने कुनै पात छैन ॥

कयौँ जन्म बाँचे म हिन्दू भनेर ।
यहाँ अङ्क ठूलो कुनै सात छैन ॥

म नै सर्व भन्दै तिमी बस्न थाल्यौ ।
तिमीमाथि मेरो कुनै घात छैन ॥

तिमी मस्तमा आज पढ्दै गरेछौ ।
जहाँ पुस्तिकाको कुनै खात छैन ॥

✍ ***रोशन रिजाल, कक्षा ७***

# नयाँ वर्ष

सबको ओठमा हाँसो छाउँदै आयो नयाँ वर्ष ।
सधैभरी चम्किरहोस् उमङ्ग र हर्ष ॥
शुभकामना सबैलाई नयाँ वर्ष मनाउँ ।
जिन्दगीको प्रत्येक पाइला खुसीयाली मनाउँ ॥

प्रयास गरौँ साथी हामीले साँच्चै हुन्छ राम्रो ।
उन्नति र सफलतामा मन जाओस् हाम्रो ॥
शुभकामना छ है साथी मेरो तिमी प्रति ।
पूरा हुँदै जाओस् मनका भावना जति ॥

अधुरा ती कामना पूरा हुँदै जाओस् ।
चन्द्रमा जस्तो मुहार तिमीमा पनि छाओस् ॥
अघिल्ला ती वर्षका लक्ष्य अधुरा नै भए ।
पक्कै पूरा गर्छौं साथी प्रयास गर्दै गए ॥

खुसीयाली पक्कै ल्याउँछ नयाँ वर्ष आएपछि ।
पक्कै पूरा हुन्छ सबै वाचा कसम खाएपछि ॥
तिम्रा सबै इष्टमित्र खुसीसाथ बसून् ।
यदि दुःख कष्ट परे तिमीलाई साथ दिउन् ॥

✍ ***समीर अधिकारी, कक्षा–७***

# गजल

तिम्रै नाम जप्दा जप्दैँ हराएको छु ।
आउ शिव नभेटाई कराएको छु ॥

आजसम्म धेरै गल्ति गरे होला मैले ।
त्यसैले भगवान्सँग डराएको छु ॥

भगवान् धेरै खुशी हुनुहुन्छ भनेर ।
तिमीलाई नै मुटूभित्र सजाएको छु ॥

तिमी गुलाबमा हुन्छौँ भन्ने सोँचेर मैले ।
आफ्नै आगनमा बगैँचा बनाएको छु ॥

आमाको सपना पूरा गर्न नसकेपछि ।
आमालाई नै पीडा दिई रुवाएको छु ॥

✍ ***विधान आचार्य, कक्षा १०***







# मेरो देश

***मालिनी***

झलमल सब पृथ्वी सूर्य नै चम्कनाले
अनि हृदय रसायो मेघको गर्जनाले ।
कुहु–कुहु–कुहु गर्दै कोइली रम्छ आज
कल–कल सब गङ्गा बग्दछिन् लक्ष्य साथ ॥

सब मनुजहरूले कार्य गर्छन् डटेर
सरर कलम लेख्छन् वीर गाथा रमेर ।
भुवन पनि रसाई दिन्छ दाना र पानी
जनम हुनपुगेका ठान्दछन् भाग्यमानी ॥

छलकपट हरायो बुद्धको प्रेरणाले
विविध कविहरूका काव्यको सिर्जनाले ।
अतिथिहरू सदा झैँ चुम्दछन् यो हिमाल
प्रकृतिसँग रमाई भुल्दछन् देश आज ॥

रसभरित सुधा झैँ वेदका वाक्य पढ्दै
जन हृदयहरूमा प्रेम विश्वास भर्दै ।
यस धरणि रुवाई काल पस्ने छ कैले
तर पनि नडराई प्राण छाड्नेछु मैले ॥

***प्रज्वल खनाल, कक्षा ९***

# गजल

देशनिम्ति कती पाइला चालिए ।
चालिएनन् छिटो झन् ढिला चालिए॥

फूल स्वार्थी भयो युद्धका खातिर ।
झन् चलेनन् स्वयम् कोपिला चालिए॥

उड्छ यो जिन्दगी हेर धूलो बनी ।
बन्छ यो ब्रह्मको खुड्किला चालिए॥

फूल फुल्छन् भने फर्किजान्छु तर ।
बेसरी काटिने झन् शिला चालिए ॥

***अमृत गौतम, कक्षा-७***

# नदी

**नरकुटक**

धवल हिमालको सकल शीतलता जलमा
वहन सदा गरी अटल पर्वत काखमहाँ ।
कलकल बग्छ रातदिन चञ्चल आज नदी
हरक्षण शैलको प्रणयले अझ दिव्य बनी ॥

सकल लता तथा तठहरू सबमा रसले
हरित बनाउँदै मन रमाउँछ सुन्दरले ।
रसमय गीत कोकिल रचाउँछ कल्कलमा
सबसित प्रीति लाउँछ नदी अब जीवनमा ॥

पर उपकारको सरलभाव बनेर यहाँ
सकल मनुष्यको परमलक्ष बताई यहाँ ।
जल कणको वहावसँग जीवन सिक्छ कुनै
अब जलमा रहस्यमय जीवन बुझ्छ कुनै ॥

पथ छ अती कनेर अवरोध अती छ यहाँ
तर सब विघ्नको पथ मिटाउन बग्छ यहाँ ।
जलधि पुगी नदी सब थकान मिटाउँछ रे
अविरल लक्ष्यमा जलधिमा मित लाउँछ रे ॥

सब नरको यथार्थ प्रतिबिम्ब बनेछ नदी
सुख दुःख आउँछन् मनुज जीवनमाझ अती ।
तर सब सामना गर अवश्य बनेर नदी
सफल हुनेछ जीवन सुहाउँछ फूल बनी ॥

*✍ प्रकाश धिताल, कक्षा ८*

# ब्रह्म

इन्दिरा

विजय नै गऱ्यो आज ब्रह्मले
सब सखाहरू स्वच्छ भावले ।
कति रमाइलो आश्रमै अहो
सब जना मिली ब्रह्मज्ञान भो ॥

धन सबै यहाँ छैन गैगयो
मनन ब्रह्मको गर्छु आज यो ।
कविहरू सबै गम्न थाल्दछन्
हृदयमा भने प्रेम राख्दछन् ॥

शिव तिमी सदा आउने गर
अहम चोरेर भावना भर ।
सबल प्राणीको साथमा अझ
सब खराबको नाश नै गर ॥

अबुझ बाल हुँ माफ माग्दछु
म शिव जप्दछु प्रेम साँच्दछु ।
भव जति सबै देख्नु मात्र छ
म यति भन्दछु ब्रह्ममात्र छ ॥

✍ *प्रवीण काफ्ले, कक्षा ७*

# शिवको महिमा

*–तोटक*

जब हाड र मासु रह्यो यसमा
खुन चर्म मिलेर खडा जसमा ।
अति सुन्दर आसनमा मन छ
शिव जीव अहो ! उ सदा खुशी छ ॥

पहिले न भएर रह्यो अहिले
र रमाइ रहन्छ सदा जहिले ।
हरि कल्पि बसे रचना भरको
म सुषुप्तिमहाँ पनि नित्य अहो !

जसको गुणगान गरी सकिन
कहिले पनि मन्त्र जपी बसिन ।
पदमा झुकि माफ म माग्छु अब
शिव नित्य रहेछ अनित्य सब ॥

शिवको महिमा जहिले म गरुँ
सुख शान्त रही सहसा म भजूँ ।
सजिलै भवलाई तिमी जिउनू
अति निर्मल पीयुष झैँ पिउनू ॥

✍ *नीराजन रिमाल, कक्षा ८*





# नेपाल मेरो घर

*शार्दूलविक्रीडितम्*

रम्छन् देवहरू जहाँ मिलीजुली नाच्छन् यहीँ देशमा
खेल्छन् मानवले यहाँ प्रकृतिमा राम्रो भई भेषमा ।
यस्तो देश बनेछ रे जगतमा दुःखी भने को छ र
बस्छन् साधुहरू जहाँ तप गरी नेपाल मेरो घर ॥

हात्ती बाघहरू रमी वनमहाँ बस्छन् सबै साथमा
डाफेँ नाच्छ मिली यहीँ स्थलमहाँ खेल्छन् सबै मातमा।
यस्तो देशमहाँ सबै जनहरू बस्ने मिलेरै गर
झर्ना झर्छ पहाडबाट सजिलै नेपाल मेरो घर ॥

भाषा धर्महरू सबै फरक छन् जाति फरकै छ रे
हाम्रो देश बनाउन सहिदले सत्कार्य राम्रो गरे ।
हासेको छ सदा हिमालहरू नै नेपाल यो सुन्दर
राम्रो पर्वतले सुशोभित भयो नेपाल मेरो घर ॥

बग्दैछन् अहिले हिमालहरूमा खोला र नाला पनि
पर्दैछन् जब सुन्दरै हिउँहरू राम्रो छ चाला पनि ।
यस्तो सुन्दर देश हो जगतमा नेपाल के कम् छर
घुम्दैछन् अहिले विदेशीहरू नै नेपाल मेरो घर ॥

✍ ***शिवहरि नेपाल, कक्षा ८***

## हाइकु

लामो कपाल
भयो नाग नै माला
शिव नै तिम्रो ॥

कौपीन धारी
राक्षस नचाउने
भोले बाबा हौँ ॥

दिगम्बर हौ
मान्दैनौ केही लाज
नमः शिवाय ॥

गाँजाको पोको
भए दक्षजी बोको
हेलाबाट नै ॥

गजडिँयाको
शिव नै टिम् लिडर
केही त हुन्छ ॥

✍ ***हरि ढुङ्गाना, कक्षा–६***

# जाडो याम

*मालिनी*

लगलग मुटु काप्ने यो भएको छ जाडो,
जति जति गरि आगो बाच्छु नौलो छ जाडो ।
तपतप गरि खस्ने शीतको रात हो यो,
थर थर गरि बस्ने जाडोको बात हो यो ॥

गुटुमुटु गरि बस्ने यो चलेको हवामा,
धपधप गरि बालौँ अग्नि नै त्यो थलामा ।
कसरि हिम खसेको यो अनौठो छ बानी,
वरपर सब व्याप्तै शीतको नै छ खानी ॥

पवन सरि बगेको यो चरीको जवानी,
मधुर धुन चरीको यो चलेको बिहानी ।
शितल पवनको वायु चलेको छ जाली,
चिर चिर गरि पन्छी नाच्दछन् डालि डालि ॥

धर धर गरि झर्नै थाल्दछन् यी तुसारो,
कल कल सरि पानी झैँ बगेको तुसारो ।
सिर सिर गरि हावा त्यो कुनामा चलेको,
झलमल गरि इन्धन् त्यो कुनामा बलेको ॥

**ऋषिराम पौडेल, कक्षा ९**

# गजल

यहाँ जिन्दगी एक धोका रहेछ ।
झिकेको घिउ दूध पोका रहेछ ॥

खुवाई भरी प्रेम पीठो र पानी ।
दशैँ अष्टमीको त बोका रहेछ ॥

इरादा विना आसमानी नियाल्ने ।
त्यही बुल्बुले पानी फोका रहेछ ॥

जहाँ हात्ती छिर्दैछ अड्किन्छ पुच्छर् ।
समस्याहरूको त ढोका रहेछ ॥

**सफल पौडेल, कक्षा ८**





# जिन्दगी

-पृथ्वी

डटेर किन लाग्दछौ सकल बाह्य संसारमा,
प्रसिद्ध हुन खोज्दछौ धरणिमा र सम्मानमा ।
गरेर सुख दुःखको सकल सामना जिन्दगी,
हुनेछ पछि जीर्ण यो मनन वल्ल होला अनि ॥

छ यो सकल जीन्दगी सुमनझैँ अती सुन्दर,
प्रफुल्ल मनले रमेर अब हाँस्छ चारै तीर ।
पढेर किन फाल्दछौ समय आज साथीहरू,
बनेर अब फूल झैँ रम अवश्य बढ्छौ बरू ॥

समाउ अब लेखनी गर सुकाव्यको सिर्जना,
बनेर कविलोकमा सफल बन्छ सत्साधना ।
डुबेर अब भावमा सतत रम्छ आनन्दमा,
बगे कलम भावमा सरस काव्य स्वच्छन्दमा ॥

उठाउ अब जीवनी अझ रमेर संसारमा,
बिसाउ सब चाहना सकल पूर्ण सन्तोषमा ।
बुझेर सबको हुने मरण हो भनी अन्तमा,
रमाउ निजरूपमा अब बसेर एकान्तमा ॥

✍ ***विजय रिजाल, कक्षा ८***

# गजल

चाहिए अनेक कार्य गर्नुपर्दछ ।
विश्वमा बसेर ज्ञान छर्नुपर्दछ ॥

मोज मस्ती हुन्छ जिन्दगीमहाँ सधैँ।
एकदिन अवश्य मित्र मर्नुपर्दछ ॥

अल्छी गर्नुहुन्न गर्नुपर्छ रे श्रम ।
सारि पाइला समुद्र तर्नुपर्दछ ॥

भोक लाग्छ अन्न केही छैन घरमहाँ।
पार्टीमा गएर पेट भर्नुपर्दछ ॥

लोभ मोह छोड्नुपर्छ जिन्दगीमहाँ।
नत्र मित्र यत्र तत्र चर्नुपर्दछ ॥

✍ ***सङ्गम पौडेल, कक्षा १०***


**तपाईंको अनुमति विना कसैले तपाइँको अपमान गर्न सक्दैन**


# यो देश हाँसी रहोस्

*शार्दूलविक्रीडितम्*

नेपाली पनमा छ गौरव ठूलो चाहिन्न केही अरु
हेर्छौं सुन्दर टाकुरा नयनले हामी हिमालीहरू ।
शत्रूको वशमा कदापि नपरी नेपाल बाचीँ रहोस्
सेता रम्य हिमालका लहरले यो देश हाँसी रहोस् ।।

प्यारो लाग्छ मलाई देश अनि, त्यो नेपालको सम्पदा
रम्दै आपसमा मयूर वनमा नाच्छन् खुशी भै सदा ।
नेपाली वनका सुपुष्पहरूले यो राष्ट्र सिङ्गारियोस्
कोशीको गहिराइले धरतिमा यो देश हाँसी रहोस् ।।

फेवाताल र गण्डकी अरूणले नेपाल सम्पूर्ण छ
मेरो देश कलाहरू प्रकृतिमा आफै भरीपूर्ण छ ।
रातो सुन्दर सूर्यको किरणले यो देश चम्किरहोस्
अग्ला पर्वतले सुशोभित भइ यो देश हाँसी रहोस् ।।

✍ ***नीतीश बराल, कक्षा ९***

## गजल

नेपाल आमाको मुटु दुखेको छ आज ।
उही वीर सपूत लुकेको छ आज ।।
आफ्नै अगाडी अन्याय र अत्याचार देखिँदा पनि ।
अन्याय विरुद्ध लड्न ऊ रूकेको छ आज ।।

स्वाभिमानी भनी विदेशमा ख्याति प्राप्त गर्ने ।
उही वीर शत्रु माझ झुकेको छ आज ।।
विश्वमाँझ चन्द्रसूर्य झन्डा बोकी हिड्ने वीर ।
उही वीरले झण्डा माथि थुकेको छ आज ।।

सगरमाथा हिमालबाट बग्ने हाम्रो नदी पनि ।
नेपालीमा जोश घट्दा सुकेको छ आज ।।

✍ ***रूपेश रिजाल, कक्षा ९***





# यो देश निर्माणमा

*शार्दूलविक्रीडितम्*

छैनन् सज्जन ती कतै पनि यहाँ बग्दैछ रातो जल
भ्रष्टाचार र लूट देश प्रतिको नेतृगणैको छल ।
यस्तो आपतमा परेर जननी भन्छिन् स्वयम् आशमा
नेपाली अब पुत्र हे सर अघि यो देश निर्माणमा ॥

पैसा मात्र छ एक साधन यहाँ पैसा बिना के छ र ?
पैसाले मतमा लिएर जनता गर्दैछ आन्दोलन ।
कोही शान्ति दिने अवश्य पनि हे जन्मिन्छ यो आशमा,
भन्छिन् ती जननी बढौँ अघि सरौँ यो देश निर्माणमा ॥

मात्रै आपसमा फुटेर सजिलै यो देश चल्दै छ र ?
नाका बन्द भएछ द्रव्य सजिलै के पेट भर्दै छ र ?
अत्याचार सहिन्छ के ? अझ पनि आउ बढौँ सानमा
आऊ हात मिलाउँ हे मनुज हो यो देश निर्माणमा ॥

✍ ***कुबेर भट्ट, कक्षा–९***

# गजल

लडी युद्धमा दाजु–भाई मरेछन् ।
अहो ! मूर्ख औ आत्मघाती बढेछन् ॥

सधैँ साथ दिन्थे कयौँ दुःख पर्दा ।
हिजोका सबै मित्र शत्रू भएछन् ॥

यहाँ बालिकाको सही मूल्य तोक्ने ।
नपत्याउने खालका पो रहेछन् ॥

न गर्दा भयो आश भान्सेहरूको ।
चुलो कुर्छु भन्दै भकारी सकेछन् ॥

लुटेरा छ अर्कै फटाहा छ अर्कै ।
अनायास ज्ञानी महात्मा फसेछन् ॥

✍ ***शुकदेव भट्टराई, कक्षा ७***


रिस मूर्खताबाट पलाउँछ र पश्चात्तापबाट टुङ्गिन्छ


# सरस्वती

***उपजाति***

सरस्वती आउ न ज्ञान देऊ,
पीडा र बाधा मनमा न लेऊ ।
म पढ्न पाऊँ सजिलै जहिल्यै,
ठूलो बनूँ ज्ञान लिई अहिल्यै ॥

भोले तिमी छौ अति रम्य देव,
ती रूप तिम्रा कति छन् अनेक ।
हामी सजाऔँ यस फूलबारी,
सद्ज्ञानका पुस्तक नै थुपारी ॥

सुदीप झैँ बल्नु सदा रमाई,
चम्काउनूँ है अब रात्रिलाई ।
म चन्द्र हूँ बल्छु हरेक साँझ,
म हाक्न सक्नेछु यदा समाज ॥

अज्ञानताको म भएछु खानी,
अपूर्व सङ्कल्प भयो सिरानी ।
चाहन्छु बाँच्ने जग जग्मगाई
सरस्वती ज्ञान दिनोस् मलाई ॥

***सुदीप शर्मा, कक्षा ८***

# शिव

***छन्द–इन्दिरा***

शरण पर्दछौँ पाउमा शिव
सगुण भेदले पालना गर ।
डमरु हातमा नाग साथमा
मगन ज्योति झैँ वृष साथमा ॥

सब मनुष्यको पाल हौ तिमी
असुर दैत्यको नाश हौ तिमी ।
भुजग नागको हार लाउँछौ
जगत नै सबै पार लाउँछौ ॥

भुजग नाग हो हात कङ्कण
गृहमहाँ थियो एक प्राङ्गण ।
पुज सधै सधै भक्ति भावले
मन रमाउने रङ्ग रङ्गले ॥

कवि रमाउँछन् माथमा शिव
नदि रमाउँछिन् साथमा अङ्ग ।
किन विलापमा रूनु पर्दछ
अभयदानले दुःख हर्दछ ॥

***सुरेश पोख्रेल, कक्षा ६***

# नेपाल

*झ्याउरे लय*

नेपाल देश विश्वमा एक सुन्दर विशाल ।
नेपाल भित्र सुन्दर ताल पहाड हिमाल ॥

सगरमाथा विश्वको शिर नेपालमा पर्दछ ।
सगरमाथा चढ्नका निम्ति विदेशी झर्दछ ॥

नेपाली हाम्रो उत्तरी भाग हिमाल भन्दछन् ।
विदेशीहरू सर्वदा आई यसमा रम्दछन् ॥

विचको भाग पहाड नाम सुन्दर अत्यन्त ।
डाँडा र काँडा रहेको यसमा रम्छ है मन त ॥

पहाड तल तराई पर्छ अत्यन्त समथर् ।
अन्नको मुख्य उत्पादन केन्द्र हो 'अन्नभण्डार' ॥

भारत पर्छ सिमाना धेरै निकट यसको ।
नेपाली सबै मिलेर भनौँ जय होस् देशको ॥

नेपाल हाम्रो सुन्दर शान्त प्रकृति क्षेत्रमा ।
देशलाई हामी मिलेर राखौँ आफ्नो नै नेत्रमा ॥

✍ ***विशाल पौडेल, कक्षा–७***

# गजल

म मर्नेछु भन्दै करायो कसैले ।
अहो ! आयु वृद्धि गरायो कसैले ॥

अहिंसा परं धर्म भन्दै छ मान्छे ।
लुकाएर भित्रै चरायो कसैले ॥

न कोही छ बोल्ने उही सत्य मीठो ।
स्वयं नै चिनारी हरायो कसैले ॥

सबै सामु सोझो र राम्रो बनेर ।
म मर्दिन्छु भन्दै डरायो कसैले ॥

✍ ***युवराज दाहाल, कक्षा १०***





# गजल

भूमिक्षय रोक्नलाई जाली बनाऊ बरू ।
उद्यान संरक्षणको लागि माली बनाऊ बरू ॥

मलाई तिमी सधैँ भरी नराम्रो नै किन ठान्छौ ।
जिस्काउन सधैँ मेरा गाली बनाऊ बरू ॥

राम्रो सोच राख्ने गरे पक्कै केही बन्न सक्छौ ।
सर्वप्रथम आफ्नो कुभाव खाली बनाऊ बरू ॥

द्यौता यदि चाहे भने पृथ्वी उल्टाउन सक्छन् ।
भगवद्भक्ति आफ्नो ओठको लाली बनाऊ बरू ॥

त्यो नराम्रो कुरालाई राम्रो सोचे राम्रै हुन्छ ।
प्राप्त कुनै गालीलाई ताली बनाऊ बरू ॥

✍ ***गौरव खतिवडा, कक्षा ९***

# गजल

यहाँ गोप्य राम्रा अनेकौँ कुरा छन् ।
अपूर्ण व्यथा छन् स्वयंमा पूरा छन् ॥

सबैको नराम्रो कतै दोष हुन्छ ।
म ठूलो हुँ भन्छन् परं ती भुरा छन् ॥

सबै जीवका वाणीमा राम-नाम ।
र के गर्नु गोजीहरूमा छुरा छन् ॥

सुधा प्राप्य देखिन्छ यो मार्ग किन्तु ।
हरेक् पाइलामा कडा बागुरा छन् ॥

समातेर यी हात डोह्याउने ती ।
भए नीच भागे सबै निष्ठुरा छन् ॥

✍ ***मौसम ढकाल, कक्षा–१०***

# गजल

आकाशमा चन्द्रमा र जुनको नाता भए सरी ।
तिम्रो र मेरो एकअर्कामा खुनको नाता भए सरी ।।

मेरो जीवन तिमीविना व्यर्थ मान्ने गर्थें आमा ।
कपडा बुन्न कपास र ऊनको नाता भए सरी ।।

फूलको सुवास बनी हाम्रो माया घुम्थ्यो यत्र तत्र ।
प्रीतगीतमा सर्गम र धुनको नाता भए सरी ।।

सानो तिनो मेरो घाउमा मन दुखाउने गर्थ्यौं आमा ।
बिर्सिनै असक्य छु म गुनको नाता भए सरी ।।

जीवन मेरो फूल बन्यो फूलको सुवास तिमी आमा ।
युवतीको घाँटिमा सुनको नाता भए सरी ।।

✍ *अभिमन्यु ढुङ्गना, कक्षा ८*

# नेपाल

**झ्याउरे लय**

नेपाल हाम्रो सारै नै राम्रो विश्वले चिनेको ।
मानिस माथि सद्भाव राख्ने स्वभाव भएको ।।

हिमाल हाम्रो पहाड हाम्रो तराई हाम्रै हो ।
विभिन्न जाति नेपाली हाम्रो भावना राम्रै हो ।।

मधेसी, थारू, कामी र क्षेत्री सबै हुन् नेपाली ।
कसैमा छैन भेद्भाव हाम्रो भाषा हो नेपाली ।।

गरिबमा दया गर्ने ती वीर बुद्धिमान हुन्छन् रे ।
कोमल शब्दहरूले व्याप्त मायाको खानी रे ।।

वीरता देखाई जगतमा सान बढाउने नेपाली ।
रगत बगाई देशको रक्षा गर्दथे गोर्खाली ।।

✍ *टेकराज रिजाल, कक्षा ६*





# गजल

धर्म हुन्छ देवताप्रति सधैँ विश्वास गर्नेलाई ।
मुक्ति मिल्छ साँच्चै कपाल मुण्डिएर मर्नेलाई ॥

कतै मेरो काट्छन् कुरा भने कतै प्रशंसा छ ।
धन्यावद छ भन्दिनु है मेरो अघि पर्नेलाई ॥

भाग्य भन्दै आशै मात्र गरी दुःख पाउँदा रैछन् ।
साच्चै पुग्छ मनोरथ आफैँ काम गर्नेलाई ॥

आफू राम्रो बन पहिले अरु चिन्ता गर्नुअघि ।
काँध थाप्न सकिँदैन भीरबाट झर्नेलाई ॥

*समुद्र रिमाल, कक्षा–८*

---

# नेपाल

*झ्याउरे लय*

नेपाल देश सुन्दर छ यो सुन हे साथी हो ।
प्रभावकारी संस्कृति कला नेपाल देशको ॥

नेपाली बन्नु भनेको साथी गौरव बढ्नु हो ।
सगरमाथा विश्वको छानो नेपाल देशको ॥

लाग्दछ साथी स्वर्ग नै जस्तो देश यो नेपाल ।
त्रिशूली अनि गण्डकी नदी बग्दछन् सलल ॥

मयूर डाँफे नाच्दछन् अहो ! हर्पल खुशीमा ।
गर्नु है माया रमाई आफ्नो नेपाली भेषमा ॥

*शिवराम दुवाडी, कक्षा–७*

# गजल

भएछन् ती दिक्दार पैसा तिरेर ।
हुँदै हुन्न रे प्यार पैसा तिरेर ।।

कठै दाज्यु आफ्ना बहिनीहरूको ।
न गर्नोस् न व्यापार पैसा तिरेर ।।

तिमी मिल्छ भन्थ्यौ, म मिल्दैन भन्थेँ ।
कहाँ मिल्छ संस्कार पैसा तिरेर ।।

कहाँ फक्रला यो सुनौलो जवानी ।
गरी सोह्र शृङ्गार पैसा तिरेर ।।

हरायो यहाँ न्याय साँच्चै हरायो ।
छिरे स्याल दरबार पैसा तिरेर ।।

***सर्वेश्वर ढुङ्गेल, कक्षा–९***

सदा छर्छ सद्ज्ञान मीठो कहानी ।
त्यसैले पलायो ममा स्वच्छ बानी ।।

हटाएर दुष्कर्म, दुर्भाव, हिंसा ।
बनाऊ सुनौलो तिमी जिन्दगानी ।।

सबैको खुशीको तिमी सोच राख्छौँ ।
मुटूभित्र तिम्रो दयाको छ खानी ।।

यहाँ शक्तिले काम केहीँ हुँदैन ।
म बन्नेछु संसारकै बुद्धिमानी ।।

न जानी न जानी गरेँ गल्ति मैले ।
त्यसैले क्षमा देउ दुर्गे भवानी ।।

***मनीष विडारी, कक्षा ९***

# मुक्तक

आफ्नै दाजुभाइ मार्दा खुसी हुन सक्दिनँ म ।
वीर गोर्खाली नेपाली हार्दा खुसी हुन सक्दिनँ म ।।
शान्तिक्षेत्र पाए रम्ने शान्तिप्रेमी नेपालीलाई ।
युद्धक्षेत्रतिर सार्दा खुसी हुन सक्दिनँ म ।।
तिम्रो स्वार्थ पूरा गर्न बन्ने नयाँ कानुनले ।
जनतालाई दुःखी पार्दा खुसी हुन सक्दिनँ म ।।
नेपाली दिदीबहिनीहरूको सौदा गरेर ।
राता रातै नदी तार्दा खुसी हुन सक्दिनँ म ।।

***गणेश भण्डारी, कक्षा ७***

**बलि पशुको होइन पशुत्वको दिनुहोस्**

# गजल

थिए यहाँ वीरहरू आज छोडेर गए।
ती देश द्रोही सबैलाई तोडेर गए॥

देशमा शान्ति अनि सुरक्षा ल्याई।
देशका सबै जनताहरूलाई जोडेर गए॥

देशको कडा र क्रुर शासन हटाई।
त्यो कालो बादलको घुम्टो ओडेर गए॥

देशमा शिक्षा मात्र नभई जनचेतना जगाई।
शान्ति रुपि बिउलाई गोडेर गए॥

दुःख अनि अन्यायको जालमा परे पनि।
देशलाई अर्कै बाटोमा मोडेर गए॥

***विवेकराज भट्टराई, कक्षा ९***

जहाँको ध्वजा विश्वमा फर्फरायो।
त्यही राष्ट्र कम्जोर कस्ले गरायो॥

विदेशीहरूले लुछे देश भन्दै।
करायो कयौँ बार कौवा करायो॥

कहाँबाट यस्तो चमत्कार भो लौ!
म सुन्दै छु है शत्रुले मन परायो॥

घुमेको छ मस्तिष्कमा बाल्यकाल।
रटिन्थ्यो रमाई ख-माने खरायो॥

लगाउँदैन चोली र दौरा कसैले।
कि नेपालको सभ्यता नै हरायो॥

***चण्डिका सुवेदी, कक्षा ९***

# शिव

कोही भजन पूजा र आरति नित्य गर्दछन्।
अहङ्कारी शिव भन्दै निन्दा पापीष्ट गर्दछन्॥
शिव नै जीवको रूप जीव नै शिव हो सदा।
आँखा बन्द गरी हेर्दा मनमा शिव छन् खडा॥
देखिएको सबै रूप प्रेरणा खातिर बुझ।
मनुष्यले सदा यस्को अनूसरण गर्दछ॥
सबैले बास गर्नुछ श्मशानमा बुझ सखा।
वासना त्यागेर तिमी ब्रह्मचिन्तन गर सदा॥

***अनन्त सुवेदी, कक्षा ६***





# पहिचान

*झ्याउरे लय*

तराई बोल्यो पहाड बोल्यो नेपाल बोलेन ।
थारुले बोल्यो मगरले बोल्यो नेपाली बोलेन ॥
पहिचान आफ्नो सबैले खोजे जोखिम मोलेर ।
नेपालीलाई नेपालीले नै जिउँदै पोलेर ॥
नेपाली बन्न कसैले पनि जोखिम मोलेन ।
इसाई, हिन्दु, मुस्लिम बोल्यो नेपाली बोलेन ॥
भुईँचालो आउँदा आमाको आँसु खसेको थिएन ।
दाजुभाइ लड्दा आँखामा आँसु बचेको थिएन ॥
आमाको आँसु पोखियो कति कसैलाई पोलेन ।
सबैले बोल्दा लाटोले बोल्यो नेपाली बोलेन ॥

***विजय पोखरेल, कक्षा ६***

# गजल

म देख्दैछु पर्खाल यो कल्पनामा ।
सुगा झैँ बित्यो जिन्दगी पिञ्जडामा॥
भएको छु साँच्चै कतै भ्यागुता झैँ ।
र देख्दैछु संसार सानो कुवामा ॥
तिमी प्रेम गर्छौ भने भित्रबाटै ।
कयौँ फूल फुल्नेछ साह्रो शिलामा॥
म कामी भएनी, ऊ बाहून् भएनी ।
बगेको छ है रक्त रातो नसामा ॥
बढेको छ हत्या अनि काटमार ।
बचे ज्यान फर्कन्छु छिट्टै म आमा॥
करोडौँ छ पैसा भनी दम्भ गर्छौ ।
तिमी जल्नु पर्नेछ एक्लै चितामा ॥

***शिवराज थपलिया, कक्षा ९***

गुराँसे रगत् रङ्ग चोली हरायो ।
म नेपाली हुँ भन्न बोली हरायो ॥

दिएको थियो सम्पदा ती अनौठा ।
सबै रित्तियो भाग्न झोली हरायो ॥

म नेपाललाई बदल्दिन्छु साँच्चै ।
फलाक्ने मिठो केपी ओली हरायो ॥

जमाना नयाँ काल फेर्दो रहेछ ।
न बाजा बजे आज डोली हरायो ॥

***ऋषभ अर्याल, कक्षा–८***







# गजल

यहाँ हात्तीहरूको बीचमा चल्ला चरेका छन् ।
बढे किल्ला विदेशीका र नेपाली सरेका छन् ॥

सबै पाइन्छ के गर्नु, वृथा लाग्दैछ सर्वस्व ।
न बुझ्छन् अर्थ माटोमा, यहाँ मोती छरेका छन् ॥

भएका छन् सबै झूटा र जे पायो त्यही बोल्छन् ।
अरुलाई रचेको जालमा आफैँ परेका छन् ॥

छ गाह्रो राष्ट्रको निर्माण चाहिन्छन् कयौँ वीर ।
अनेकौ युद्धमा लड्दै यहाँ धेरै मरेका छन् ॥

सधै दुःखी बनाइन्छन् रुवाइन्छन् यहाँ दीन ।
बिकाइन्छन् रूपैँयामा अतः आँशु झरेका छन् ॥

*सुरज सापकोटा, कक्षा १०*

---

# गजल

आजकल भरीयाको भारी हराएको छ ।
भारी बिसाउने चौतारी हराएको छ ॥

ऊ आफूलाई ठूलो ठान्दै थियो ।
कठै उसको जुँगा दारी हराएको छ ॥

म महापुरुषको खोजीमा हिड्दै थिएँ ।
उता भने ब्रह्मचारी हराएको छ ॥

युवावर्ग सबै विदेशिन थालेपछि ।
उब्जाउ गर्ने खेतबारी हराएको छ ॥

बिचरा सासुमण्डली यसो भन्दै थिए ।
अचेल बुहारीको सारी हराएको छ ॥

*शिव सापकोटा, कक्षा ७*





# गजल

भोगी हेर यथार्थमा, जीवन कति साह्रो हुन्छ ।
दाग लागेपछि कालो, मेट्न कति गाह्रो हुन्छ ॥
सम्पत्तिको मात लाग्दा, जति गाली गरेपनि ।
यथार्थमा जन्मभूमि स्वर्गभन्दा प्यारो हुन्छ ॥
मान्छे मात्र होइन साथी, संसारमा हरेक चिज ।
काम लाग्दा भाँडो हुन्छ, सकेपछि घाँडो हुन्छ ॥
अन्त किन ताकी हिड्नु, विश्वास लिई खोज्यौं भने ।
आफैँ भित्र प्रतिभा र सिर्जनाको धारो हुन्छ ॥
अहङ्कारको गुलेलीले हानी देलान् जथाभावी ।
जोगाउनु उन्नतिको शिर सबको तारो हुन्छ ॥
हौसलाको बिउ लिई प्रतिभाका पाटालाई ।
खन्न थाले बाली लाग्छ, नखनेमा थारो हुन्छ ॥

***प्रवीण पराजुली, कक्षा ७***

# गजल

मलाई हेर्दैछिन् आमा पखेराको भीरबाट ।
तगारोलाई पन्छाएर दुःख अनि पीरबाट ॥
धरापमा हिड्नुपर्ने कस्तो विडम्बना यहाँ ।
उम्कन सक्दैन माछा उन्निएपछि झीरबाट ॥
उपदेश दिन खोज्यो गाली सम्झन्छ ।
अहङ्कारमा चोट पर्छ वाणीरूपी तीरबाट ॥
खहरेझैँ मान्छे विना कारण गड्गडाउँछ ।
तिरस्कृत बन्छ व्यक्ति आफ्नै तक्दिरबाट ॥
मान्छे स्वार्थी बनेपछि प्रकृतिमा स्वार्थ छैन ।
निःस्वार्थी भै बग्छिन् नदी हिउँदको शिरबाट ॥

***प्रह्लाद आचार्य, कक्षा ९***





# गजल

थोरैलाई घर अनि धेरैलाई महल चाहिन्छ ।
तर दुवैलाई जोड्ने आधार सरल चाहिन्छ ॥

हरेक वस्तुहरू आफैँमा व्यवस्थित हुन चाहन्छन् ।
मानौँ त्यसैले फोहोरलाई खाडल चाहिन्छ ॥

आज बाग्मती रोइरहेछ ऊ कान थुनेर हिड्छ ।
सायद उसले यो सोचेन भोली गङ्गाजल चाहिन्छ ॥

हिजो मेरा आमाबाले खेतबारीमा के फलाएनन् ?
कठै मेरो जिन्दगी ! चामल किन्न पसल चाहिन्छ ॥

किसानी गरेर बुबाले यस अर्थ पढाएका हुन् ।
बिचरा उनलाई लगानीको प्रतिफल चाहिन्छ ॥

***सागर लामिछाने, कक्षा–७***

# गजल

महलमा बस्ने सपना न देख, वेकार हुन्छ ।
दुःखीको लागी झुपडी नै दरबार हुन्छ ॥

कलिलो बालकको हातमा आजकल ।
कलम हैन धारिलो तरबार हुन्छ ॥

कस्तो अवस्था आइपुग्यो आज ।
अरु त परै जाओस् दाजुभाइमै काटमार हुन्छ ॥

जसको काखमा हुर्की ठूलो भा छ ऊ आज ।
उसैलाई नै आमा पृथिवीको भार हुन्छ ॥

आफू सम्पन्न छु भन्दैमा दम्भ नगर्नु होला ।
दीन दुःखी गरीबको ईश्वर नै सार हुन्छ ॥

***प्रवेश पोख्रेल, कक्षा ७***





# के काम संघीयता

गोर्खालीहरूको छ रक्त सर हो खोला नदीको जल
थापा भक्ति र भीमसेनहरूको त्यो देनले उज्ज्वल।
मेरो राष्ट्र थियो कुनै समयमा आर्थिक सम्पन्नता
मैना पाँच भयो खुलेन सरकार के काम संघीयता ?

थ्यो भूकम्प र सम्पदा हरिदियो राष्ट्रीय ती दर्पण
आएथ्यो तर संविधान भनु खै हाँसो कतै रोदन।
दुःखी जीवन भत्कियो झुपडी नै बस्नु कता खै कता
जाडो भोकमरी छ मर्छ जनता के काम संघीयता ?

राजा धार्मिक बन्नुपर्छ जनता हिन्दूत्व नै जीवन
साँच्चै शाश्वत धर्म नेतृगणमा चाहिन्छ है सज्जन।
पक्कै धर्म स्वतन्त्र हुन्छ सबमा पाएर स्वाधीनता
हिन्दू राष्ट्र रहेन यो शिव थलो के काम संघीयता ?

लड्छन् आपसमा तराइतिरका नाका भयो बन्द रे
चूलो बल्न सकेन गाउँघरमा खाद्यान्न पाइन्न रे।
भो पेट्रोल अभाव गाडीहरूमा उद्योग ठप्पै यता
यो नेपाल भयो कि भारत भयो के काम संघीयता ?

***प्रभाकर घिमिरे, कक्षा ९***

***विच्छिन्न विच्छिन्न हुने प्रवृत्ति***
***सहन्न भाइ म त एक रत्ति।***
***विशाल नेपाल म रच्छु रच्छु***
***कहाँ छ मृत्युञ्जयलाई मृत्यु॥***

***-राष्ट्रकवि माधव घिमिरे***





# मेरो देश

***मालिनी***

जमिन सब नियाल्दा लाग्छ नेपाल नानी
तर वन झरनाले स्वर्गको राजधानी ।
शिखर सगरमाथा विश्वको लाग्छ टोपी
रगत सहिदको हो गण्डकी सप्तकोशी ॥

दिनहुँ कलह हत्या बन्द हड्ताल बढ्दा
शरम बहुत लाग्यो बुद्धको देश भन्दा ।
अनपढ बहिनीको देह बेच्दैछ दाई
अझ कति दिन हास्छौँ राष्ट्रआमा रुवाई ॥

दल प्रमुखहरू नै देशको शान बेच्छन्
कपट छलहरूमा मात्र निर्दोष फस्छन् ।
कति दिन यसरी नै मौन बस्नेछ ऐन
किन मनुजहरूमा देशको प्रेम छैन ॥

अझ पनि झुपडीमा भोकले बाल रुन्छ
प्रतिदिन टुहुरोको देह निर्वस्त्र हुन्छ ।
विकट थलहरूमा छैन स्वास्थ्योपचार
अब त सुन न नेता गर्भिणीको पुकार ॥

सडक घर हुनेले गाँस औ वास पाऊन्
दलित पिछडिएका वर्गले हाँस्न पाऊन् ।
पशु सरह न लागोस् देशको भागबण्डा
सब मनुज मिलेमा हाँस्छ नेपाल झण्डा ॥

✍ ***सुजन थपलिया, कक्षा ९***





# मेरो नेपाल

*झ्याउरे लय*

सानैमा मैले खेलेको ठाउँ यो देश नेपाल ।
र तोते बोली बोलेको ठाउँ यै देश नेपाल ॥
हिमाल, पहाड, तराई देशको भौगोलिक शोभा छ ।
विविध हावा, पानी छ प्राप्त प्रकृति शोभा छ ॥
थारू र लिम्बु, बाहुन मगर जातजाति बिचमा ।
न राखे विभेद पुग्नेछौं हामी विकासको शिखरमा ॥
कुसंस्कारलाई हटाई देशलाई बनाऔँ सुन्दर ।
नेपाली मनको पिडनलाई हटाऔँ मिलेर ॥
बुद्ध नि जन्मे सीता नि जन्मिन् जनक जन्मिए ।
एकीकरणको सञ्चालन कर्ता पृथ्वी नि जन्मिए ॥

✍ ***मनोज प्रसाद पराजुली, कक्षा ६***

---

# गजल

जता जान्छु पछि लागी सताउँछे माया ।
खाली संसार संसार भनी रटाउँछे माया ॥

भाग्छु टाडा, छाया बनी पिडा दिई हैरान बनाई ।
रमौँ एकान्तमा भन्दै फकाउँछे माया ॥

बस्दिन म यो संसारमा झुटो त हो भन्दा पनि ।
जबर्जस्ति हात समाई नचाउँछे माया ॥

वेदान्तमा रम्छु आत्मतत्त्व गम्छु भन्छु आज ।
मन बेचैन पारी तेल घसाउँछे माया ॥

बुझ्यौ हे साथी संसार भुलाउने झुटो माया ।
आत्मवेत्तासँग मात्रै डराउँछे माया ॥

✍ ***अभिप्रताप पाण्डे, कक्षा १०***





## गजल

संसारमा स्वर्ग देखेर को आयो ?
आफ्नोभाग्यआफैँलेखेरकोआयो?

सबै आफूलाई अहम् बढा भन्छन्,
भ्यागुताको धार्नी जोखेर को आयो?

सरकार बन्धुहरूलाई प्रश्न,
विगतको कथा मेटेर को आयो ?

हाम्रा नेतालाई पक्कै थाहा होला,
हाम्रो त्यो सिमामा टेकेर को आयो?

मोफतमा जलपान मात्र गरियो,
बस्ती बिहीनलाई भेटेर को आयो

*सुशीलचन्द्र अधिकारी, कक्षा ८*

## गजल

निशामा प्रभा देखिएको रहेछ ।
निशा सूर्यले सेकिएको रहेछ ॥

छ आश्चर्य कस्तो म देख्दैछु आज ।
बुझेँ बल्ल उस्ले पिएको रहेछ ॥

पिपासा लिइ हिँड्छ कोही अगाडी ।
छ पानी भनी लेखिएको रहेछ ॥

बसी हेर्छ अर्को कहाँ पुग्छ भन्दै ।
यही काम ठेक्का लिएको रहेछ ॥

हरायो कहाँ शान्त नेपाल हाम्रो ।
सबै शास्त्रमा खोजिएको रहेछ ॥

*रोहित वाग्ले, कक्षा १०*

## गजल

यहाँ नील आकाश छानो रहेछ ।
मिठो धून छर्ने पियानो रहेछ ॥

सबै चीज आफ्ना भनी ठान्दथेँ म ।
यहाँ किन्तु सारा बिरानो रहेछ ॥

सधैँ दोषि देख्ने अरुलाई हेर्दा ।
सबैको यहाँ नेत्र कानो रहेछ ॥

कहाँ सूर्य तारा कहाँ पृथ्वि जावो ।
अतः विश्वको चित्र सानो रहेछ ॥

*विमल सापकोटा, कक्षा ६*

सधैँ देश हाँसोस् यहि कामना छ ।
र नेताहरूको कयौँ बाहना छ ॥

हटाऊ ल ! अज्ञान सारा मबाट ।
सधैँ भारतीमा यहि वन्दना छ ॥

सबैले गरे उन्नति हुन्छ केहि ।
बढौँ उन्नतिमा सुनौलो पना छ ॥

कसैको छ रे जिन्दगी दुष्टतामा ।
कसैको भने झन् मिठा भावना छ ॥

कसैले बिताए सुखी जिन्दगानी ।
कसैको भने ज्यून मै साधना छ ॥

*सुरेशराज पाण्डे, कक्षा ८*

# गजल

ठुलो बन्दै म हुर्केको छु आमाले सिकाएर ।
यसैले मातृको माया नजाउ हैँ भूलाएर ।।

लडाई दाजु भाईले सदा ऐश्वर्यको लागि ।
यसैले बाँच्नु सन्यासी बनी जीवन विताएर ।।

बढे नेपालमा धेरै नराम्रा कार्यको योद्धा ।
तिनैको नाशको लागि सबैलाई जगाएर ।।

सबैले देशको लागि गरौँ सङ्घर्ष इच्छाले ।
नजाऊ छोडि आमाको सधैँ आँखा भिजाएर ।।

*✍ सुरेशनारायण गौतम, कक्षा ८*

# गजल

यही आधार हो तिम्रो नजाऊ मार्ग मोडेर ।
रुँदै आमा सधैँ भन्छिन् नजाऊ देश छोडेर ।।

म आफ्नो देशको रक्षा सधैँ गर्नेछु भन्नेले ।
यहाँ हत्या र हिंसाको गयो है बोट गोडेर ।।

ठूलो ठान्दैछ मान्छे आज आफूलाई आफैँले ।
अहम्को स्वार्थको दुर्भावनाको खोल ओडेर ।।

कतै भोका लुला अन्धो कतै सम्पन्न मान्छे छन् ।
कयौँ बाँचीरहैका छन् सडक्मा हात जोडेर ।।

भएँ रित्तो कुनै बेला पुकारे मित्र आफन्त ।
परे मर्नेछु भन्नेले गए विश्वास तोडेर ।।

*✍ अनमोल धिताल, कक्षा ९*

# हाइकु

युवाको कुरा
आकाश छुने इच्छा
गाँजाको धुँवा ।।

गजल कविता
साहित्यको संरक्षण
अस्ताउँदो सूर्य ।।

परिवर्तनको
नाममा भागवत् र पुराण
आँधी र हुरी ।।

नियम निष्ठा
समय मिलेमात्र
नेपालको सरकार ।।

बालकको इच्छा
दुई ढुङ्गाबीचको तरुल
बुझ्दैन मान्छे ।।

हिंसा नगर्ने
सरकारी नियम
भाषणमात्र ।।

*✍ मोहित पौडेल, कक्षा ६*